# महादेवरूपी श्वेत भैरवलाई पुर्खा मान्छन् राजोपाध्याय

nepalnews.com/opinion/17803-2020-02-21-05-54-55



वर्षका चारवटा रातको विशेष महत्त्व रहेको छ। दसैं बेलाको कालरात्रि, कृष्णाष्टमीको मोहरात्रि, लक्ष्मीपूजाको सुखरात्रि र महाशिवरात्रि। महादेवकै दिन अनि महादेवकै रात हो, शिवरात्रि। देवादिदेव अर्थात् देवताका पनि सबैभन्दा सुरुका देवता हुन् महादेव।

महादेवका अनेक रूप, अवतार छन्। यी रूप र अवतारको त्यत्ति चर्चा हुने गरेको छैन, जति विष्णुको दशअवतारको हुन्छ। महादेवकै यस्तै रूपमध्ये भैरवको चर्चा गरौँ। भैरव पनि विभिन्न छन्, विशेषतः अष्टाङ्ग भैरवलाई मानिन्छ। तर त्यसबाहेक काठमाडौँ उपत्यकामा मानिने विभिन्न भैरवमध्ये एक हो, श्वेत भैरव।

काठमाडौँमा इन्द्रजात्राको समयमा श्वेत भैरवको चर्चा चल्ने गर्दछ, अरू बेला प्रायः बन्द रहने हनुमानढोकास्थित श्वेत भैरवको मन्दिर इन्द्रजात्राताका खुल्ला रहन्छ। यस श्वेत भैरवलाई स्थानीय नेपालभाषामा हाथुद्यः भनिन्छ। यसबेला श्वेत भैरवको मुखबाट छ्याङ झार्ने गरिन्छ भने त्यो छ्याङ खान युवाहरूबीच ठुलै होडबाजी पनि चल्छ। अचेल चाहिँ यहाँ महिलाले छ्याङ खानका लागि एक दिन छुट्याइएको छ।

पचली भैरवको १२-वर्षे खड्गसिद्धि जात्राको समयमा ब्रम्हटोलबाट श्वेत भैरव निकाल्नु अनिवार्य छ। ब्रम्हटोलमा राजोपाध्याय ब्राम्हणकै घरबाट श्वेत भैरव निकालिन्छ। यहाँबाट श्वेत भैरव निकालिएपछि अन्य स्थानमा श्वेत भैरव निकालिन्न।

यसैगरी काठमाडौंमा श्वेत भैरवको लागि अर्को विशेष हो, खड्गसिद्धि जात्रा। काठमाडौँमा दुईवटा खड्गसिद्धि जात्रा प्रसिद्ध छ– प्रत्येक बाह्र वर्षमा एकपटक पचली भैरवको खड्गसिद्धि जात्रा र अर्को प्रत्येक बाह्र वर्षमा भद्रकालीको खड्गसिद्धि जात्रा।

यी दुइटै जात्रामा नवदुर्गा गणको नाच विभिन्न स्थानमा नचाइन्छ भने नवदुर्गा गणसँगै गणेश, सिंघिनी, व्याघ्रिनी र श्वेत भैरवको नाच पनि निकालिन्छ। भद्रकालीको खड्गसिद्धि जात्रामा श्वेत भैरव निकालिनु अनिवार्य छैन भने पचली भैरवको १२-वर्षे जात्रामा काठमाडौंको ब्रम्हटोलबाट श्वेत भैरव अनिवार्य निकालिन्छ।

को हो त श्वेत भैरव? खासमा श्वेत भैरव नवदुर्गाको गणमा पर्दैनन्। उनी गणमा अतिथिको रूपमा प्रवेश गर्छन्। यसरी अतिथिका रूपमा आउने श्वेत भैरवले मातृकागण कसैलाई चिनेका हुँदैनन् र प्रत्येक देवीदेवतासँग परिचय नाचमा प्रदर्शन गरिन्छ।

यसरी परिचयका क्रममा श्वेत भैरवलाई ब्राम्हण महादेव भनिन्छ। यस नाचमा श्वेत भैरव ब्राम्हण नै हुन्, त्यसैले अन्य देवीदेवतालाई पञ्चमाकार दिइँदा श्वेत भैरवलाई नैवेद्य दिइन्छ। अण्डा पनि कुखुराको होइन, हाँसको मात्र दिइन्छ।

खड्गसिद्धि जात्राका नाचमा ब्राम्हण देवताको रूपमा प्रस्तुत गरिएको छ। साथै श्वेत भैरव तथा यस नाचका अन्य देवीदेवतालाई पौराणिकभन्दा पनि स्थानीय देवीदेवताका रूपमा देखाइन्छ, र यी सबै देवीदेवतालाई काठमाडौँका नेवारहरूले आफ्ना पुर्खा मान्दछन्।

नेवार समाजमा आफ्ना दिवंगत पुर्खालाई पनि देवताको रूपमा पूजा गर्ने परम्परा छ। यस किसिमले देवता बनाइएका पुर्खालाई स्थानीय नेवार आजु, अजिमा भन्ने गर्छन्। इन्द्रचोकको आकाश भैरवलाई आजुद्यः (पुर्खा देवता) नै भनिन्छ, भने पचली भैरवलाई त्यप आजु र मातृकागणलाई अजिमा भनिन्छ।

श्वेत भैरवलाई पनि यहाँको समाजले पुर्खा अथवा आजुकै रूपमा लिएका छन्। साथमा, श्वेत भैरव एक ब्राम्हण भएको कारणले ब्राम्हण परिवारकै पुर्खा हुन् भन्न सकिन्छ। यसै सन्दर्भमा ब्राम्हण महादेवरूपी श्वेत भैरव को हुन् भन्ने केलाउन श्वेत भैरव कुन ब्राम्हण परिवारका पुर्खा हुन् भन्ने खोतलौँ।

माथि नै उल्लेख भइसकेको छ, पचली भैरवको १२-वर्षे खड्गसिद्धि जात्राको समयमा ब्रम्हटोलबाट श्वेत भैरव निकाल्नु अनिवार्य छ। ब्रम्हटोलमा राजोपाध्याय ब्राम्हणकै घरबाट श्वेत भैरव निकालिन्छ। यहाँबाट श्वेत भैरव निकालिएपछि अन्य स्थानमा श्वेत भैरव निकालिन्न।

श्वेत भैरव निकालिनुअघि सुरुमा पचली भैरवको नाच हुन्छ, त्यसपछि पचली भैरव ब्रम्हटोलका राजोपाध्याय ब्राम्हणको घरमा जान्छन्। त्यहाँ विधिपूर्वक पूजाआजापछि पचली भैरवलाई श्वेत भैरवको रूप दिइन्छ। अर्थात् भन्न सकिन्छ, श्वेत भैरवको जन्म सोही घरमा हुन्छ। सो समयमा श्वेत भैरवलाई आवश्यक पहिरन, गरगहना आदि तथा आवश्यक पूजासामग्री समेत सोही राजोपाध्याय ब्राम्हणकै घरबाट दिइन्छ। जन्म भएका बालकलाई परिवारले नै लुगा लगाइदिने हो र नामकरण, जातकरणका पूजा पनि परीवारले नै गर्ने हो। खड्गसिद्धि जात्रामा पनि उक्त श्वेत भैरवको जन्म ब्रम्हटोलमा सोही घरमा भएको देखिन्छ।

टोलको नाम पनि ब्रम्हटोल रहेको छ। स्थानीय नेपाल भाषामा ब्राम्हणलाई ब्रम्हू भन्ने गरिन्छ। ब्रम्हूत्वाल भन्ने नामबाट अपभ्रंश भई ब्रम्हटोल भएको देखिन्छ। श्वेत भैरवको तन्त्रसाधनामा प्रकाण्ड, सिद्ध ब्राम्हणको वासस्थान भएकोले टोलकै नाम ब्रम्हूत्वाल – ब्रम्हूत्वाः – ब्रम्हटोल रहन गएको अनुमान गर्न सकिन्छ।

ब्राम्हण भन्नेबित्तिकै धेरैले वैदिकसँग जोडा ज्ञाता वा वैदिक भनेर बुझिन्छ। तर, श्वेत भैरवलाई वैदिक ब्राम्हण मात्र रूपमा हेर्दा अपूर्ण हुन्छ, श्वेत भैरव कौल-तान्त्रिक ब्राम्हण हुन्। यसरी वैदिक-कौलिक परम्परालाई तत्कालीन नेपालमण्डलमा राजोपाध्याय ब्राह्मणले बोकेका थिए। काठमाडौं उपत्यकाका आदिवासी ब्राम्हण, नेपालभाषी ब्राम्हण भएको कारणले पनि श्वेत भैरव राजोपाध्यायका पुर्खा हुन् भन्ने कुरामा बल पुग्छ।

श्वेत भैरवलाई पनि यहाँको समाजले पुर्खा अथवा आजुकै रूपमा लिएका छन्। साथमा, श्वेत भैरव एक ब्राम्हण भएको कारणले ब्राम्हण परिवारकै पुर्खा हुन् भन्न सकिन्छ।

श्वेत भैरव नवदुर्गा गणभित्र आउँछन्। नवदुर्गा गणभित्र आउनुलाई शक्तिउपासनासँग प्रष्ट जोड्न सकिन्छ। नवदुर्गा गणभित्र आएपछि श्वेत भैरवलाई इन्द्रायणीले (स्थानीय नाम - मनमय्जु) महापात्र हातमा दिन्छन्। श्वेत भैरवले ब्राम्हण भएर कसरी महापात्र लिने भनी प्रश्न गर्छन् र नवदुर्गा गणभित्र आएपछि महापात्र नलिई हुँदैन भन्ने उत्तर आएपछि महापात्र नलिई नहुने भए सुपलं (परालबाट) लिन्छु भन्दै पराल पात्रमा डुबाउँदै मद्यपान गर्छन्। यो परम्परा यहाँका ब्राम्हणमाझ छ।

विशेषतः काठमाडौँ उपत्यकाका नेवार समुदायमा सनातन हिन्दु धर्मावलम्बीका गुरु-पुरोहितका रूपमा राजोपाध्यायले आज पनि कौल परम्परालाई अवलम्बन गर्दै आएका छन्। सबै राजोपाध्यायका मात्र नभई ब्रह्मटोल स्थानविशेषका राजोपाध्यायले यसरी १२-वर्षे खड्गसिद्धि जात्राका महादेवरूपी श्वेत भैरवलाई पुर्खा मानेको देखिन्छ। तर, बृहत्तर रूपमा

हेर्ने हो भने महादेव र ब्राह्मणरूपी भैरवलाई जोड्ने यस नाचले वैदिक-तान्त्रिक परम्पराका साथ समाज विकसित भएको चित्रण गर्छ।